# नेपाल-सांस्कृतिक परिषद्-पत्रिका

वर्ष १ ] वैशाख २००६ [ अङ्क १

## नेपाल, नेवार र नेवारी भाषा

( श्री बाबुराम आचार्य )

### १ । नेपाल र नेवार शब्दको व्युत्पत्ति

आजभन्दा चार शताब्दीपहिलेका एक कविले नेपाल शब्दको व्युत्पत्ति लगाउनालाई 'ने' नामक मुनिको कल्पना गरेर नेले पालन गरेको देश हुनाले नेपाल भन्ने नाम रहेको हो भनेर श्रोताहरूलाई भुलाउने चेष्टा गरेका थिए[१]। तिनले आफ्ना सुविस्ताका निमित्त अर्को ठाउँमा नेका बदलामा 'नेमि' नामको प्रयोग पनि गरेका थिए[२]। यो भयो अघिका कत्थकका कुरा। हाल वैज्ञानिक युगका विद्वान् प्राध्यापक सिलव्याँ लेवीले पञ्च शब्दबाट पाञ्चाल शब्द बनेको उदाहरण दिएर फेदीलाई कहने 'नीप' शब्दबाट नेपाल शब्द बनेको संभव देखाउनुभएको छ[३]। तर पञ्च शब्दमा 'आल' प्रत्यय गाँसिएर पाञ्चाल बन्न सक्दछ। नीप शब्दबाट त्यो प्रत्यय जोडिएर नेपाल बन्ने नियम संस्कृत व्याकरणमा पाइँदैन। यो तद्धित प्रत्यय जोडिंदा मूल शब्दका पहिला स्वरको वृद्धि हुन आवश्यक हुनाले नैपाल बनिन सक्दछ, न कि नेपाल। यस तरहका तर्कना अरूले पनि गरेका छन्। अब त्यस्ता तर्कनालाई छोडेर युक्तियुक्त बिचार गर्न आवश्यक छ।

नेपाल र नेवार शब्दमा निकै समानता पाएर डाक्टर टामस यंगले कुनै मूल शब्द विकास भएर यी दुइ शब्द बनेका हुन् भन्ने विचार स्थापना गरेका र सर जार्ज ग्रियर्सनलें यस कुराको

१—ने नाम्ना मुनिना पूर्वं पालनात्पुण्यकर्मणा।
इदं हि हिमवत्कुक्षौ नेपाल इति चोच्यते ॥ Le Nepal, Vol. II, P. 67

२—नेमे स्वसस्य चेत्रस्य मुनीनामग्रणीर्भव। ( उद्धत पशुपतिपुराण )

३—Sylvan Le'vi—Le Nepal Vol. II, P. 66

समर्थन गरेका थिएँ। परन्तु प्राध्यापक टर्नर महाशयले यस स्थापनाको खंडन गरेर नेपाल शब्द विकास भएर नेवार शब्द बनेको हो अथवा नेवार शब्द विकास भएर नेपाल शब्द बनेको हो भनी आफ्ना प्रसिद्ध नेपाली-अंग्रेजी-कोषमा लेख्नुभएको छ। परन्तु शब्दविकासका नियमलाई ध्यानपूर्वक विचार गरेमा न नेपाल शब्दबाट नेवार शब्द बन्न संभव छ, न नेवार शब्दबाट नेपाल शब्द। यस विषयमा यंग र ग्रियर्सनको निरूपण युक्तिपूर्ण देखिन्छ। तर कुन शब्द विकास भएर यी दुइ शब्द बन्न आएका हुन् भन्ने विषयमा विचार गर्नालाई मुर्मी वा तामांग बोलीका न्यार्बा शब्दउपर ध्यान दिन आवश्यक छ। न्यार्बा भन्ने तामांगका एक थरको नाम हो। उनीहरूका कथनानुसार नेवार र तामांगका रक्तमिश्रणबाट न्यार्बाको सिर्जना भएको हो[२]।

नेपाल शब्दका अन्त्यमा लकार र नेवार शब्दका अन्त्यमा रेफ छ। यिनमा पहिला कुन हो भन्ने विचार गर्नालाई यी दुइ शब्द सबभन्दा पहिले कहाँ कहिले प्रयोग गरिएका छन् भन्ने विचार गर्न आवश्यक छ। नेपाल शब्दको प्रयोग उत्तर भारतवर्षका पहिला मौर्य सम्राट् चन्द्रगुप्त ( इ० सं० प० ३२१-२९७ ) का मंत्री कौटिल्यले बनाएका अर्थशास्त्र-मा पाइन्छ[३]। त्यसमा नेपालबाट पाटलिपुत्र ( वर्तमान पटना )मा जाने-'भिङ्गिसी' नामक आठपाटे घुमराढीको बयान दिइएको छ। यस समयमा विहारमा जो मागधी भाषा प्रचलित थियो त्यसमा रेफको उच्चारण हुँदैनथ्यो। त्यसका बदलामा सधैं 'ल' व्यवहार हुन्थ्यो। यहाँतक कि सम्राट् अशोक ( इ० सं० प० २७४-२३७ ) ले आफना शिलालेखहरूमा आफ्नो पदवी 'राजा'-का बदलामा 'लाजा' लेखेका छन्[४]। यस कारणले स्थानीय नेवार शब्द पाटलिपुत्रमा नेपाल बोल्ने गरेको र यसैलाई कौटिल्यले संस्कृत भाषामा लिएको देखिन्छ। संस्कृत भाषा बोलचालमा व्यवहार नहुने हुनाले त्यसमा विकास हुने शक्ति छैन। त्यस भाषामा रहेका यस वैगुन वा गुनले देशवाची भएर यो शब्द उस समयदेखि चलिआएको देखिन्छ।

अभाग्यवश, नेवार शब्दको पुरानो प्रयोग पाइँदैन। अठारौं शताब्दीमा नेपालमा आएका युरोपीहरूले लेखेका नेपालका वृत्तान्तमा यो शब्द पहिले प्रयोग भएको देखिन्छ। तर नेपार र नेवार शब्दका बीचमा केवल माझको एउटा वर्ण फरक हुन आएको छ। मुखका एउटै

---

१—Linguistic Survey of India, Vol. III, Part I, P. 213

२—A Narba is the progency born of intercourse between a Murmi and a Newar. The Narba has the highest social standing amongst the Atharajatt, and ranks nearly equal to the Barathamang ( Vansitartt: Gurkhas, P. 142 ).

३—कौटिल्य—अष्टप्लौतिसङ्घात्या कृष्णाभिङ्गिसी।
वर्षवारणमपसारक इति नैपालकम् ॥ कौटिल्यः अर्थशास्त्र, २ अधि० ११ अध्याय ३० प्रकरण।

४—अशोकको शिलालेख।

अवयवबाट बोलिने अघिल्लो वर्ण कठिन व्यंजन र पछिल्लो कोमल व्यंजन छ। सजिलोतिर लाग्ने मानिसको स्वभाव नै हो। तर 'प' बाट एकदम 'व' नभई बीचमा 'ब' भएको अनुमान हुन्छ। अर्थात् नेपारबाट नेबार र नेबारबाट नेवार बन्नु स्वाभाविक छ। यो क्रम न्यार्बो शब्दमा पाइन्छ। यसमा अझसम्म 'ब' को 'व' भएको छैन। यो शब्द बन्दा भोटिया भाषाको 'पा' प्रत्ययको प्रभाव परेको देखिन्छ[1]। मुर्मीहरूले भोटियाँ लामा गुरुहरूबाट बौद्धधर्मको शिक्षा लिएका हुनाले गुरुका भाषाको प्रभाव पर्नु स्वाभाविक पनि हो।

नेपार शब्दको व्युत्पत्ति वा खास अर्थ के हो ? भन्ने प्रश्न यहाँ उठन सकद्छ। यस विषयमा एक दृष्टान्त दिन उचित छ। मवैया पान र मगही बोली भनेर एकै नासका दुइ विशेषण शब्दको व्यवहार हुन्छ। यी दुवै मगध शब्दबाट विकास भएर बनेका हुन् भन्न पनि सकिन्छ। तर यो मगध शब्दको अर्थ र व्युत्पत्ति बताउन सकिंदैन। यही हाल नेपार शब्दको छ।

## २। नेपाल शब्दको सामान्य र व्यापक अर्थ

वाग्मती नदीका सिरानको १६ × २० मिल फराक भएको ब्याँसी प्राचीन युगदेखि नेपालको केन्द्रस्थल बनेर आएको छ। यहींका पुराना बस्ती विकास हुँदै आएर अचेलका ललितपुर, काठमाडौं र भक्तपुर नगर बनेका छन्। यस कारणले नेपार जातिको मूल घर प्राचीन कालको नेपाल यसै ब्याँसीको आसपासमा सीमित रहेको देखिएको छ। भगवान् बुद्धदेव ( इ० सं० पू० ५६३-४८३ )का अन्तिम समयमा कपिलवस्तुको विध्वंस हुँदा भागेर शरणार्थीका रूपमा आएका आफ्ना देशवासीहरूलाई भेट्नाका निमित्त उहाँका मुख्य शिष्य आनन्द भिक्षु यसै ब्याँसीमा आउनुभएको थियो[2]। चन्द्रगुप्त मौर्यका समयमा अनिकालले सताउँदा जैन महात्मा भद्रबाहु पनि यहीं आएर केही साल रहनुभएको थियो[3]। अशोकका निर्वाणपछि यसै ब्याँसीमा बौद्ध धर्मका चैत्य र बहाल बन्न थाले। लिच्छवि राजाहरूले यहीं देवालयहरूको स्थापना गरे। यहीं राजधानी गरेर लिच्छवि, बैस, मल्ल राजाहरूले टाढा-टाढासम्म शासन चलाए। यस कारणले नेपालीका सांस्कृतिक स्मारकहरू यसै ब्याँसीमा ज्यादा रहन गएका छन्। यसो हुँदा सामान्य व्यवहारमा नेपाल भनेर यसै ब्याँसीलाई लिने चलन छ। तर यस ठाँउमा रहेका राजधानीबाट शासित भएका राज्यभरका प्रदेशहरूलाई मिलाएर व्यापक अर्थमा नेपाल शब्द व्यवहार गरिन्छ। विदेशीहरूले माथि लेखिएका सामान्य अर्थमा यस शब्दको व्यवहार कहीं गरेको देखिंदैन; सर्वत्र

---

१—हाम्रा भाषामा घरका नाममा 'आल' प्रत्यय जोडिन्छ; जस्तो डोब्याल, खनाल। यसै अर्थमा भोटिया भाषामा 'पा' प्रत्यय जोडिने गरेको देखिन्छ, जस्तो स्यार ( पूर्व ) मा रहने स्यार्पा, डुक ( बिजुली देश अर्थात् धर्मा ) मा रहने डुक्पा इत्यादि।

२—Le Nepal, Vol. III, P. 183

३— „ „ „ II, P. 65

व्यापक अर्थमा व्यवहार गरेको देखिन्छ । तैपनि नेपालभित्र सामान्य अर्थमा पनि व्यवहार हुँदै रहेको हुनाले यो भेद छुट्याउनका निमित्त यस केन्द्रस्थलका ब्याँसीलाई नेपाल ब्याँसी वा नेपाल उपत्यका भन्ने चलन भएको छ ।

नेपारहरूका समयमा व्यापक रूपमा नेपाल शब्दले कहाँसम्मका प्रदेशलाई समाएको थियो भन्ने निश्चय गर्न सकिंदैन । बुद्धदेवका समयसम्म यस नेपालका छिमेकमा दक्षिणपट्टि वृजि र मल्लका प्रजातन्त्र शासन रहेका हुनाले आरंभमा नेपारहरू पनि प्रजातन्त्रका रूपमा रहेका थिए भन्ने निर्णय गर्न सकिन्छ । जब शिशुनागवंशी राजा अजातशत्रु ( इ० सं० पू० ४९१-४५९ )ले यी दुइ प्रजातन्त्रलाई मारेर आफ्ना साम्राज्यमा मिलाए तब नेपारहरूमा पनि राजतन्त्र खडा हुनु स्वाभाविक छ । चौधौं शताब्दीका आखिरमा लेखिएका एक वंशावलीको ग्रियर्सनले बडो प्रशंसा गरेका छन्[1] । यो पुस्तक नेपालका सर्कारी पुस्तकालयमा गोपालराजवंशावली कहिएर रहेको छ । यसमा लिच्छविहरू आएर राज्य स्थापना गर्नुभन्दा पहिलेका जो ३२ जना किरात राजाका नाम दिइएका छन् ती नेपार जातिका राजा देखिन्छन् । भारतवर्षका पूर्वोत्तर प्रदेशमा रहेका आग्नेय देशी जनतालाई संस्कृत भाषामा किरात भन्ने चलन छ । यस कारणले नेपालका नेपारहरू पनि आग्नेय देशी जातिका देखिन्छन्[2] ।

इसवी संवत्भन्दा पहिलेका दोस्रा शताब्दीदेखि लेखिन थालेका महाभारत-मा नेपालको नाम नहुनु एक अनौठा कुरा छ[3] । यो लेख नेपालका किरात राज्यका अन्तिम शताब्दीतिरको हो । यसमा नेपालको नाम नदिए तापनि दिग्विजयपर्वमा भीमसेन पूर्वतिर आएर विदेहमा बसी ऐन्द्र पर्वतनेरबाट सात जना किरातका अधिपतिहरूलाई जिते भन्ने कुरा लेखिएको छ[4] । यो

१—L. S. I., Vol. III, Part I, P. 214

२--संस्कृतका किरात शब्दमा र हाम्रा भाषाका किराँत शब्दका अर्थमा भारी अन्तर छ । मकवानी सेन राजाहरूले पन्ध्रौं शताब्दीमा मगरहरूका बस्तीलाई मगराँत भन्ने नाम दिएका थिए । यिनीहरूले सोह्रौं शताब्दीमा दूधकोसीदेखि पूर्वपट्टिको पहाड प्रदेश र सप्तरी मोरंगको तराई पनि जिते । दूधकोसीपूर्वका बासिन्दा किरात नै थिए । तराईका बाजीहरू यिनीहरूलाई होच्याएर किरूवा भन्दथे । यसै किरूवा शब्दबाट मकवानीहरूले मगराँतका ढाँचाको किरात भन्ने यिनीहरूका बस्तीका नाम राखे । यस तरहले किराँत भन्ने बस्तीको नाम भएको र किरात भन्ने जाति या नस्लको नाम भएको हुनाले यो अन्तर राख्न उचित छ । सारांश यो हो कि किराँतका बासिन्दा किराँतीहरू मात्र किरात होइनन् । यो भेद नबुझेर उहिलेका नेपालका किरात राजा भनेका किराँती नै हुन् भन्ने एक वंशावली लेखकलाई भान भएको थियो । (See Wright's History of Nepal, P. 109 )

३--कर्णदिग्विजयपर्वमा नेपालको नाम परेको छ तापनि अनुक्रमणिकाध्यायमा यो पर्व नलेखिएको हुनाले पछिको क्षेपक देखिन्छ ।

४--सभापर्वः अध्याय ३१, श्लोक १५ ( निर्णयसागर )

घटना सत्य हो भन्ने निश्चय गर्न सकिंदैन । तैपनि यसले ग्रंथ लेखिएका समयका परिस्थितिको सूचना अवश्य गर्दछ । यस समयका विदेहमा अचेलका दरभंगा, महोत्तरी र सप्तरीका जिल्ला पर्दथे । त्यहाँ पर्वत कहनलायकको पहाड केवल महाभारतको सिंधुली गढी रहेको डाँडो छ । नेपालका केन्द्रस्थलबाट विदेहतिर जाने मूल बाटो यसै डाँडाबाट गएको देखिन्छ । उस समयमा यसका आसपासमा साना साना सात किरात राज्य रहेका देखिन्छन् । तिनमा एउटा अवश्य नेपारको राज्य नै हुनुपर्दछ । अर्को तराईका थारूहरूको राज्य होला । बाँकी पाँच राज्य पहाड खण्डका थामी, खम्बू, आदिका होलान् । यस लेखाइबाट यस शताब्दीसम्ममा नेपारका राज्यका पूर्व र पश्चिमपट्टिसमेत अनेक साना-साना किरात रियासत खडा भएका देखिन्छन् । इसवी संवत्‌का पहिला शताब्दीमा लिच्छविहरूले जब नेपारहरूलाई हटाएर पहिला आर्य राज्य खडा गरे तब चौथा शताब्दीमा यी सबै किरात रियासत मासिएर नेपालका एकीकरणभित्र पसेका देखिन्छन् ।

लिच्छविहरूका समयका नेपालको सीमाना स्पष्ट उल्लेख गरिएको लेख कहीं पाइँदैन । गुप्त सम्राट् समुद्रगुप्तका इ० सं० ३५० तिरका प्रयागका अभिलेखमा कामरूप ( आसाम ) र कर्तृपुर ( कुमाउँ ) का बीचमा नेपाल राखिएको छ[1] । कामरूप र नेपालका बीचको प्राकृतिक सीमान्त टिस्ता नदी देखिन्छ । तर यसतर्फलाई केवल अनुमानको भर छ । नेपालका प्रतापी लिच्छवि राजा मानदेव ( ४६४-४९१ ) का चाँगुका शिलालेखमा उनले गण्डकी तरेर विद्रोही राजालाई हराई मल्लपुरी जितेको बयान छ[2] । उस समयमा काली नदीका किनारामा पर्वते मल्लको शासन स्थापित भएको नहुनाले यो मल्लपुरी कर्णाली नदीका ग्याँसीमा रहेको देखिन्छ । सातौं शताब्दीका पूर्वार्द्धमा नेपालमा आएका प्रसिद्ध चीनिया यात्री युआनच्वाँगले आफ्ना भ्रमण-वृत्तान्तमा नेपालको घेरा ४००० लि बताएका छन्[3] । ३ लीको १ मिलका हिसाबले[4] यो घेरा १३३३ मिल हुन आउँछ । यस हिसाबले त्यस समयको नेपाल कमसेकम टिस्तादेखि सखिकालेक अर्थात् इलामदेखि प्यूठानासम्म फैलिएको देखिन्छ । नवौं शताब्दीका आरंभमा जब काश्मीरका राजा जयापीडले नेपालमा आक्रमण गरेथे तब नेपालका राजा वर्मदेवले काली गण्डकीदेखि परका एक बडा नदीका किनारामा बसेर मुकाबिला गरेथे[5] । यो ठूलो नदी भेरी वा कर्णाली हुन सक्दछ । परन्तु इ० सं० ८८०मा लिच्छवि राज्यको समाप्ति भएर बैंस राज्य खडा हुँदा नेपाल राज्यको अवनति शुरु भएको थियो । ५०० वर्ष यो राज्य कायम रहँदा सीमानामा

१—Gupta Inscriptions ( Fleet ), P. 8

२—Le Nepal, Vol. III, P. 14

३—Bill; Buddhist Records of the Western World, Vol. II, P. 80

४—Chambers: Dictionary

५—राजतरंगिणी, अध्याय ४, ५२०-५४५

उत्तरपट्टि भोटले चाप्दै आएको र सिंगलिलादेखि पूर्व को पहाडखंड नेपालबाट छुट्टिएको अनुमान हुन्छ। पश्चिमपट्टिको मल्लराज्य बिलकुल स्वतन्त्र भइसकेको थियो। दक्षिणपट्टि पनि सिमरौनगढका कर्णाट राजाहरूले पूर्व भागको तराई दखल गरेर नयाँ राज्य बनाएका थिए। अचेलका बुटवलको तराई पश्चिमका मल्ल राजाहरूले लिइसकेका थिए। तैपनि सिंगलिलादेखि सखिकालेकसम्मको पहाडखंड नेपालमा बची रहेको देखिन्छ।

बैस राज्य टुट्नुभन्दा एक शताब्दीपहिलेदेखिनै राजकुलका घरेलु लडाईंले र परचक्रीका आक्रमणले चर्कन लागेको थियो। इ० सं० १३८० मा अन्तिम बैस राजा अर्जुनदेव वा अर्जुनमल्ललाई पदच्युत गरेर उनका मन्त्रीहरूले स्थितिमल्ल नामक एक रजपूतलाई राजसिंहासनमा बसाएथे, तब त्यो नेपाल राज्य टुटेर २०० वर्षका बीचमा काठमाडौं, गोरखा, लमजुंग, तनहुँ, मकवानपुर आदि पुगनपुग ३० रियासत खडा भए। तैपनि त्रिशूलीदेखि तामाकोसी-सम्ममा महाभारतका उत्तरपट्टि रहेका काठमाडौं, ललितपुर, भक्तपुर र दोलखाका चार रियासतका राजाहरू आफ्ना शासनक्षेत्रलाई नेपाल भन्दै थिए। यसै कारणले नेपालमहात्म्य-मा यसै भागलाई नेपालमा गनेको छ। तर पछिबाट दोलखाका राजाहरूले आफूलाई नेपालाधिपति नभनेर दोलखाधिपति भन्न थाल्दा[1] नेपालको सीमाना झन् खुम्चिएर पूर्व सीमाना सुनकोसी हुन आएको थियो। काठमाडौं, ललितपुर र भक्तपुरका मल्ल राजाहरूमात्र अन्तिम समयसम्म आफूलाई नेपालका राजा भन्दथे। गोरखा, पाल्पा, मकवानपुर आदिका राजाहरू आफ्ना रियासतहरूलाई नेपालदेखि बाहिर गन्दथे।

जब गोरखाका श्री ५ बडा महाराज पृथ्वीनारायण शाहले इ० सं० १७६९ मा वर्तमान नेपाल राज्यको जग बसाएर काठमाडौंलाई राजधानी गरी नेपालको पुनः एकीकरण गर्न प्रारम्भ गर्नुभयो, उस समयदेखि नेपालको विस्तार जोडतोडसंग बढ्दै गएर इ० सं० १७९२ सम्ममा पूर्वपट्टि टिस्ता नदीसम्म, पश्चिमपट्टि अलकनन्दा नदीसम्मको भूभाग नेपाल कहलायो। इ० सं० १८०५ मा पश्चिमपट्टि सतलजसम्म नेपालको सीमाना पुग्यो। यस कारणले इ० सं० १८११ मा प्रकाशित भएका अंग्रेजी विश्वकोषमा दिएका मानचित्रमा सुखीम, कुमाउँ गढवाल र सिमला जिल्लासमेत नेपालभित्र राखिएका छन्। इ० सं० १८१६ मा यस नेपालको सीमाना खुमचिएर पश्चिमपट्टि महाकाली नदी र पूर्वपट्टि सिंगलिला पहाड र मेची नदी कायम भएका छन्। वर्तमान समयमा नेपाल शब्दको अर्थ यिनै सीमानाभित्रका भूभाग हुन आएको छ। यसै भूभागका बासिन्दाहरू नेपाली कहिन्छन्। यसै भूभागमा राष्ट्र-भाषा भएर रहेको खश कुरा वा परवतिया बोली 'नेपाली' कहिन लागेको छ।

---

१—हेर्नुहवस् काठमाडौंका अद्भुतालयमा रहेको चाँदीका टकमा—"दोलषाधिपति स्री स्री जयेन्द्र सिंहदेवस्य पट्ट महादेवी स्री विजयलक्ष्मी महादेव्याः"

हुनता नेपार जातिका नामबाट नेपाल शब्द बन्यो। तर लंबा समयका फेरले त्यस नेपार जातिसंग नेपाल शब्दको सम्बन्ध बिलकुलै टुटिसकेको छ। त्यसका बोलीसंग वर्तमान नेपाली भाषाको सम्बन्ध छैन। नेपार शब्दबाट नेवार शब्द बनेको भए तापनि नेपार जातिसंग वर्तमान नेवारहरूको केवल भाषाको सम्बन्धमात्र झल्कन्छ; अर्थात् नेपार जातिका बोलीबाट विकास भएर वर्तमान नेवारी भाषा बन्न आएको देखिन्छ। परन्तु नेपारका वंशधर वर्तमान नेवारहरू हुन् भन्न कदापि सकिंदैन। तैपनि जो नेवारी भाषा बोल्दछन् उसैलाई नेवार भन्ने परिभाषा बनी रहेको र अर्को विशेष परिभाषा नभएको हुनाले नेपारका वंशधर नेवार हुन् भन्ने भान हुन सक्दछ। यो भ्रम निवारण गर्नाका निमित्त नेवारी भाषाको परिचय यहाँ दिन आवश्यक देखिएको छ।

## ३। नेवारी भाषा

नेपालका पहाडखण्डमा रहेका याकथुम्बा, खम्बू, सुनुवार, थामी, मुर्मी आदिका बोलीहरूजस्तै नेवारी बोली पनि भोट-बर्माली परिवारको एक बोली हो भन्ने भाषाविज्ञानीहरूले निर्णय गरेका छन्[१]। हुन पनि यी बोलीहरूको संस्कृत, हिन्दी, नेपाली आदि भारतीय आर्यभाषाका बोलीहरूसंग कुनै प्रकारको सम्बन्ध देखिंदैन। हुनता नेपाली भाषामा अरबी, फारसी र अंग्रेजीका शब्दहरू आएझैं नेवारी भाषामा पनि भारतीय आर्य भाषाका र भोटिया भाषाका निकै शब्द घुसेका छन्। तर संख्यावाचक शब्द र क्रियापदहरूको आर्य भाषासंग कुनै प्रकारको सम्बन्ध छैन। शब्दकोष र व्याकरणका नियम पनि अलगै छन्। ग्रियर्सनका कथनानुसार यी बोलीहरू भोटिया बोलीका हाँगाबिंगा हुन्। तर भोटका बोलीसंग नेवारी बोलीको उत्तिकै अन्तर छ जत्तिको याकथुम्बा आदिका बोलीसंग पाइन्छ।

हिमालयका यी अनार्य बोलीहरू दुइ समुदायमा बाँडिएका छन्। जुन बोलीमा नामका साथ र क्रियापदमा समेत सर्वनाम गाँसिन्छन् ती सार्वनामिक समुदायमा र अरू असार्वनामिक समुदायमा राखिएका छन्। जस्तो याकथुम्बा ( तमोर खोला ) का बोलीमा—"एक मानिसका दुइ छोरा थिए" भन्दा "लोच्छा यामि थिक्-ले नेच्छी कु-सा वीयी-छी" बोल्दछन्। यसमा लोच्छा = कुनै, यामि = मानिस, थिक्-ले = एउटा-मा, नेच्छि = दुइ, कु-सा = उसका छोराहरू, वीयी-छी = थिए-तिनीहरू। यहाँ नाम र क्रियापदमा समेत सर्वनाम शब्द 'कु' र 'छी' क्रमैले गाँसिएका छन्। यसै वाक्यलाई खम्बूका एक बोलीमा "तिक्-पु मिन्-पो सक्-पु यु-चु मो"-बोलिन्छ। यहाँ तिक्-पु = एउटा, मिन्-पो = मानिस-को, सक्-पु = दुइटा, यु-चु = उसका-छोराहरू, मो = थिए। यहाँ नाम शब्दमा मात्र 'यु' गाँसिएको छ। यही वाक्य नेवारी

१—L. S. I. Vol. III, Part 1 मा यो निर्णय र उदाहरणसमेत दिइएका छन्—हेर्नु० पृ० १९९

भाषामा "छह्म मनुया निह्म काय दु" बोलिन्छ । यहाँ नाम वा क्रियापदका साथ सर्वनाम जोडिएका छैनन् । तर संख्यावाचक शब्दका साथ नेपाली भाषामा अनावश्यक भएका जीवधारी-लाई कहने 'ह्म' शब्द आवश्यक भएर जोडिएका छन् । 'दु' यो क्रियापद वर्तमानकालका निमित्त पनि प्रयोग हुन्छ ।

सनातन धर्म लिने मगरका र बौद्धधर्म लिने गुरुंग, मुर्मी र स्यार्पाका तथा दुवै धर्म मान्ने नेवारका बोलीहरू असार्वनामिक छन । यी दुवै धर्म नलिने याकथुम्बा, खम्बू, धिमाल, थामी, ह्मयू, चेपांग आदिका बोली सार्वनामिक छन् । इ० सं० १८२९ देखि सुनुवारहरूले सनातन धर्म लिन थालेका थिए । उनैताक मिष्टर हौजसनले उनीहरूको बोली जाँच गर्दा सार्व-नामिक पाएका थिए । परन्तु ५० वर्षपछि ग्रियर्सनले जाँच गर्दा असार्वनामिक भेटिए[१] । यति थोरै समयमा वाक्यरचनाको पद्धति बदलिएर सार्वनामिकबाट असार्वनामिक बन्नाको कारण धर्मगुरु बनेका असार्वनामिक नेपाली भाषा बोल्ने ब्राह्मणहरूको सहवास देखिन्छ । ब्राह्मणहरूकै सहवासले मगरहरूको बोली पनि सार्वनामिकबाट असार्वनामिक भएको अनुमान हुन्छ । भोटिया भाषा पनि असार्वनामिक छ । यिनै भोटिया गुरुका सहवासबाट गुरुङ्ग, मुर्मी र स्यार्पाका बोलीहरू असार्वनामिक भएका अनुमान गरिन्छन् । बिहारका पहाडी प्रदेशमा संथाल आदिका जो मुण्डा बोली छन् ती पनि सार्वनामिक छन् । यिनलाई भाषाविज्ञानीहरूले आग्नेय देशी भाषापरिवारका हाँगामा गनेका छन् । नेपालका पूर्व तराईमा जो सतारहरू रहेका छन् ती पनि संथालका बोलीसंग मिल्दोजुल्दो बोली बोल्दछन् । यस कारणले नेपालका वर्तमान सार्व-नामिक बोलीहरूलाई पनि आग्नेय देशी परिवारमा गन्न उचित छ[२] । आग्नेय देशी बोली बोल्ने जातिलाई संस्कृत भाषामा किरात भनिन्छ भन्ने कुरा माथि लेखियो । मगर आदिको बोली पनि अघि सार्वनामिक देखिएका हुनाले यी सबै किरातमा गनिन्थे । यस हिसाबले नेपारको बोली पनि यस्तै आग्नेय देशी रहेको हुनाले किरात कहिएका थिए भन्ने अनुमान गरिएको हो ।

नेपारहरूको बोलीको नमूना कहीं नपाइए तापनि नेपाल ब्यौंसीमा रहेका लिच्छवि राजाहरूका संस्कृत भाषामा लेखिएका शिलापत्रहरूमा जो असंस्कृत शब्द पाइन्छन् ती नेपारका बोलीका शब्द हुनामा सन्देह छैन । ती असंस्कृत शब्दहरू संज्ञावाचक छन् । नमूनाका निमित्त प्रकाशित भएका र अप्रकाशित रहेका शिलापत्रहरूबाट केही नाम उद्धृत गरिन्छन्:—

(क) देवपाटनमा रहेका रत्नसंघका अप्रकाशित शिलापत्रमा, गाउँका नाम–दुलङ्, खेपुङ्, दुंप्रङ्, ह्यास्प्रिङ्, खेनम् ।

---

१—L. S. I. Vol III, Part 1, P. 199—Sunwari Boli

२—Northe and Morris: The Gurkhas, pp. 66

( ख ) भादगाउँ तुलाछें टोलका शिवदेवका प्रकाशित शिलापत्रमा[1], गाउँको नाम–खृपुङ् ।

( ग ) ललितपुर तौङ्या टोलका जिष्णुगुप्तका प्रकाशित शिलापत्रमा[2], गाउँका नाम–थग्व, गांगूल्, असिङ्को, कडप्रिङ्, कंकुलङ्।

( घ ) सतुंगलका शिवदेवका अप्रकाशित शिलापत्रमा, गाउँका नाम––काटुङ्, फिरङ्; जगातका नाम––कट्टारक, कुथुठर् ।

( ङ ) ललितपुरका नरेन्द्रदेवका अप्रकाशित शिलापत्रमा, करका नाम––भट्टा, माप्–चोका, पीटाल्जा ।

नेपार जातिको राज्य नष्ट भएका चार-पाँच सय वर्षपछिका यी शिलापत्रहरूमा आएका यी संज्ञावाचक नामहरू यत्तिका कर्णकटु छन् भने पहिले झन् कर्णकटु होलान्। अचेलका सार्वनामिक बोलीका शब्द पनि कर्णकटु छन्। कर्णकटु हुनु पनि सार्वनामिकको लक्षण देखिन्छ। असार्वनामिक हुँदै आएपछि कर्णकटुता हटेर श्रुतिमधुरता आउने नियम देखिन्छ। भारतीय आर्य भाषाहरूका प्रभावले वर्तमान नेवारी भाषा यत्तिको श्रुतिमधुर भएको छ कि त्यत्ति नेपाली भाषा पनि छैन। यस दृष्टान्तबाट यो कुरा साबित हुन्छ कि नेवारी भाषा अचेल असार्वनामिक भए तापनि प्राचीनकालमा सार्वनामिक थियो र त्यो बोली बोल्ने जन समुदाय किरात थियो।

## ४। वर्तमान नेवारको नस्ल ( Race ) र वृत्तान्त

नस्लको पहिचान गर्ने पहिला कसी मानिसका शरीरको बनावट छ। आर्य नस्लको लक्षणमा वर्ण गोरो वा गहुँगोरो, कद अग्लो, खाता-पाता प्रशस्त, लामो र तीखो नाक, फराकिलो निधार र ठूला आँखा मुख्य हुन्छन्। कश्मीर र पंजाबका आर्यहरूमा अचेल पनि यी लक्षण ज्यादा पाइन्छन्। तर पूर्वपट्टिबाट आएपछि हावापानी र वासस्थलका प्रभावले र अनार्य नस्लका रक्तमिश्रणले यी लक्षण कम हुँदै आएका देखिन्छन्। आग्नेय देशी नस्लको रंग-रूप देशअनुसार फरकै हुन्छ। हिमालयका आग्नेय देशी किरातको रंग-रूप मंगोलक हुन्छ अर्थात् नाक नेप्टो, गालाको हाड उठेको, चेप्टो मुहुडा, खाता-पाता कम र घुम ओढेजस्ता आँखा हुन्छन्। तर नेपालमा रहेका किरात जातहरूमा कुनैमा यी लक्षण पूरा र कुनैमा अलिकति कम पाइन्छन्। दोस्रो कसी भाषा या बोलीको छ। जो आर्य भाषाका बोली बोल्दछन् ती आर्य नस्लका र जो किरात बोली बोल्दछन् ती किरात नस्लका कहिन्छन्। तर कहीं-कहीं एक नस्लका जनसमुदायले आफ्नो बोली भुलेर छिमेकमा आएका अर्का नस्लको बोली लिएको पनि

---

१—Le Nepal, Vol. III, pp. 63–64. भक्तपुरको खोप भन्ने नेवारी नाम यसै शब्दबाट बनेको छ।

२—Indin Antiquary, V IX, pp. 171–72

देखिन्छ । यसको नमूना नेपाल तराईका थारूहरू छन् । यिनीहरूको रंग-रूप मंगोलक छ । तर भारतीय आर्य भाषा बोल्दछन् । भारतीय आर्यहरूमा ब्राह्मण, क्षत्रिय आदि जातको भेद हुन्छ । तर यी थारूहरूमा यो भेद छैन । यस कारणले यिनीहरू किरातमा नै गनिन्छन्, चाहे आर्य भाषाका बोली किन नबोलुन् ।

नेपालका किरातहरूमा बोलीले जात छुट्याउँछ । एक बोली बोल्ने जनसमुदायमा खान-पान र बिहावरीको रोकावट केही हुँदैन । सबै मगर समान छन् । गुरूङ्मा चार जात र सोह्र जात भन्ने जो भेद गरिन्छ त्यसले विशेष भेद-भाव राख्दैन । मुर्मीहरूमा बाह्र थर र अठार जातको जो भेद-भाव खडा भएको छ त्यो आधुनिक हो । यही हाल सुनुवारका दस थर र बाह्र थरको छ । अरू किरात जात थामी, ह्रायू, चेपांग, बरामू, धिमाल आदिमा मगरकै जस्तो एकता छ । याकथुम्बा र खम्बूहरूका बोली फरक छन् । बोलीअनुसार जात छुट्टिएका छन् तापनि सबै खम्बू र याकथुम्बाहरूसमेत मिलेर आपसमा खान-पान र बिहावरी चलाई रहेका छन् । तर किरात बोली मातृभाषा भए तापनि नेवारहरूमा भारतीय आर्यकै जस्तो जात-भात र छुत-अछुतको भेद-भाव मौजूद छ । यिनका रंग-रूपमा आर्य नस्लका लक्षण मौजूद छन् । यस कारणले यी किरातवर्गका होइनन् भन्ने निश्चय गर्न सकिन्छ । यो आर्य नस्लको जनसमुदाय कसरी नेपालका केन्द्रस्थलमा आएर आफ्नो भाषा छोडी नेवारी भाषा लिएर नेवार कहलायो भन्ने देखाउनानिमित्त नेपालका इतिहासका एक भागको सारांश यहाँ दिनुपरेको छ ।

इ० सं० पू० का दोस्रा शताब्दीमा अशोकले पठाएका प्रचारकहरू नेपालका केन्द्रस्थलमा आएर नेपारहरूलाई बौद्धधर्मको शिक्षा दिन सुरू गरे । यस ठंडा पहाडप्रदेशमा बिहार वा उत्तर प्रदेशका गर्मीमा रहने बुढा-बुढी आएर अडन कठिन हुनाले युवक-युवती भिक्षु-भिक्षुनी आएर धर्मप्रचार गर्दै नेपारमा घोलिंदै गएर आर्य रक्तको मिश्रण गराए । यो सिलसिला लगातार चल्दै रह्यो । नेपारहरू नेवार बनी सभ्य र सुरूप भई कृषि, शिल्प आदिको उन्नति त गरे तर बौद्धधर्मले लडाकापन सेलाइदिएको हुनाले पहिला शताब्दीका मध्यमा बिहारबाट लिच्छविहरू आएर तिनीहरूको राजपाट खोसे । यी लिच्छविहरूले आठ सय वर्ष राज्य गर्दा नेवारहरूका बस्ती एक एक गरी दखल गरेर यिनीहरूलाई भगाइदिए । भागेका नेवारहरू छिमेकमा रहेका मुर्मीमा मिसिएर न्यार्वा कहलाए । जो नेपाल ब्याँसीमा नै अडिए ती पहरी कहलाएर हीन अवस्थामा रहेका छन् । तिनीहरूको संख्या अचेल ज्यादै कम छ । अब डेढ-दुइ सय वर्षका बीचमा यिनीहरू बिलाउने संभावना छ । बौद्धधर्म मान्दैछन् । तर गरिब हुनाले गुभाजू पुरोहित नपाउँदा धार्मिक कृत्य पनि गर्न सक्तैनन् । भाषा नेवारी नै बोल्दछन् । ग्रियर्सन महाशयले यिनका बोलीलाई नेवारीभन्दा भिन्नै बताएका छन् । तर यो भूल हो । उनले दोलखाको नेवारी बोलीको नमूना पाएको भए यो भूल कदापि हुने थिएन ।

लिच्छविहरूलाई उत्तर प्रदेशका ब्राह्मणहरू भ्रष्ट क्षत्रिय भन्दथे[1]। तर यिनीहरू आफूलाई गङ्गाको धारासमान पवित्र मान्दथे। यिनीहरू सनातन धर्म मान्ने हुनाले यिनका साथ ब्राह्मण, बनियाँ, कृषक, शिल्पकार, डुम, दुसाद आदि सबै जात आएका थिए। यिनीहरूसंग बिहारबारी गर्दै पछि-पछि पनि उत्तर प्रदेश र बिहारबाट साना-साना टोलीहरू निरन्तर आउँदै रहे। ठूला जमातमा नआएर साना-साना टोलीमा आउने गर्दा एक-दुइ पुस्तामा आफ्ना बोली भुलेर नेवारी बोली लिन थाले। नवौं शताब्दीका आरंभमा बिहारबाट बौद्धधर्मको बाढी आउँदा सारा लिच्छवि बौद्ध बनेर एक जात बने। बिहारबाट थारू जातिका कुमाल, धोबी र यस्तै अरू शिल्पकार पनि जो आएका थिए ती पनि लिच्छविमा घोलिएर एउटै जातमा मिले। डुम र दुसाद क्रमैले पोडे र च्यामे कहलाई अलग-अलग रहे। नवौं शताब्दीका अन्त्यभागमा उत्तर प्रदेशबाट बैसहरू आई यी लिच्छविहरूलाई जिती नयाँ राज्य कायम गरे। यी नयाँ बैसहरूले लिच्छविहरूलाई राजकाज संबन्धी कुनै काम पनि नदिएर कृषक वा ज्यापू बनाइ दिए[3]। निर्धा भएका हुनाले लिच्छविको रूपान्तर लाछी शब्द कातरका अर्थमा प्रयोग हुन लाग्यो। लिच्छविहरू बाजा (वृजि) पनि कहिन्थे। बैसहरूद्वारा होच्याइँदा बजिया कहिन लागे।

बैसहरू आफूलाई सूर्यवंशी क्षत्रियमा गन्दथे। एघारौं शताब्दीका आखिरमा सिमरौनगढमा नान्यदेवले कर्णाट राज्य स्थापना गरेका र यी कर्णाटहरू सनातन धर्म मान्ने हुनाले यिनको प्रभाव परी बैस राजाहरू पनि अन्तिम समयसम्म सनातन धर्ममा अटल रहे। नान्यदेवका साथ नेवारहरू सिमरौनगढबाट नेपालमा आएका हुन् भन्ने एक दन्त्यकथा प्रचलित छ। तर यो साँचो होइन। सवा दुइ सय वर्ष कर्णाट राज्य कायम रहँदा पनि नेपालमा बैसराजाहरू शासन गरिरहेका थिए। सीमाना जोडिएर रहेका बैस र कर्णाटहरूमा कहिले मेल र कहिले झगडा हुनु स्वाभाविक थियो। मेलका समयमा कर्णाटहरूको चाल-चलन वेश-भूषामात्र होइन त्यस राज्यका मुख्य-मुख्य कर्मचारीहरू पनि नेपालमा स्थायी रूपसंग बसाइ आएका देखिन्छन्। यिनमा महाजु र कसजु दुइ थर पहिचानिएका छन्। महाजु कर्णाट राजवंशका मंत्रिवर्गमा र कसजु लेखाध्यक्ष (कायस्थ) हरूमा थिए। मंत्रीहरू महामात्य वा अमात्य कहिन्थे। महामात्य शब्दको रूपान्तर महाठ व्यवहार हुन्थ्यो।

बैसहरूका पाँच सय वर्षका राज्यकालमा भोटमा बौद्धधर्मको प्रचार जोडसंग बढेको हुनाले उहाँका लामाहरूले नेपालपट्टि आएर गुरूङ्, स्यार्पा र मुर्मीहरूलाई बौद्धधर्मको दीक्षा दिए।

---

१—मनुस्मृति, अध्याय १०, श्लोक २२.

२—जयदेव द्वितीयको पशुपतिको शिलापत्र; I. A., Vol. IX

३—काठमाडौं, ललितपुर, हाँडिगाउँ आदिमा लिच्छविहरूका जो शिलापत्र पाइन्छन् ती ज्यापूहरू बसेका टोलमा ज्यादा पाइन्छन्, अन्यत्र कम।

बाह्रौं शताब्दीका आखिरसम्म बिहारमा पनि बौद्धधर्म बचिरहेको हुनाले त्यहाँका भिक्षुहरू आएर बगमू नामक आग्नेयदेशी जातका एक टुक्रालाई बौद्धधर्म दिएर बलामी तुल्याए। दुइतिरबाट बौद्धहरूले धावा गर्दा बैस राजाहरूले यिनीहरूलाई आश्रय दिन करै लाग्यो। अचेल काठमाडौं र ललितपुरमा जो बहालहरू रहेका छन्, तिनमा दुइ-चारवटाबाहेक अरू सबै बैस राज्यका समयमा बनेका देखिन्छन्। यी बहालहरू नेपाली संस्कृतिका प्रतीक भएर रहेका थिए। त्यहाँ जो भिक्षु वा बाँडाहरू रहन्थे, ती दार्शनिक र वैद्य पनि हुन्थे। बौद्धदर्शनको व्याख्यान गर्ने र पढाउने कामसमेत यिनीहरू गर्ने हुनाले यी बहालहरू पाठशालाको काम दिन्थे। वैद्यहरू औषधीको काम गर्ने हुनाले आरोग्यालयको काम पनि यिनै बहालबाट हुन्थ्यो। त्यहीं देव-देवताका चित्र लेखिने र मूर्ति कुँदिने हुनाले शिल्पशालाका रूपमा पनि यी रहेका थिए। यिनमा रहेका भिक्षु-भिक्षुनीहरू गृहस्थ बन्नाका निमित्त बाहिर निस्केर उपासक वा उदास बनेर रहन्थे। यिनीहरू व्यापार र शिल्पको काम गर्दथे। तर बहालभित्र भिक्षु-भिक्षुनी साथै रहँदा व्यभिचार पनि चल्दथ्यो। तर यसलाई कुनै अपराधमा गन्दैनथे। शत्रुसंग मुकाबिला गर्नालाई हतियार नलिई तन्त्रमन्त्रमा विश्वास गर्दथे। यही यिनका नाशको कारण भयो र इ० सं १३४९ मा बंगालका आक्रमणकारी पठानहरूद्वारा यी बहाल ध्वस्त गरिए। यिनका विश्वासमा परेर बैस राजाहरूले पनि हतियारबन्द सेना राखेका थिएनन्। यसै कारणले यिनका राजभवन र देवालयहरूसमेत भस्मीभूत गराएर ती आक्रमणकारी फर्केका थिए। सनातन धर्मका मंदिरहरू राजाहरूले बनाइदिए। बौद्धहरूमा शिल्पकला बचिरहेको हुनाले यिनीहरूले पनि तोडिएका चैत्य र बहालहरू २०-२५ वर्षभित्रैमा बनाएर जस्ताको तस्तै गराए। तर चैत्य र बहालहरू बने पनि तन्त्रमन्त्रउपर मानिसहरूको विश्वास हट्यो र बहालहरूको अवनति शुरू भयो।

पछिल्ला मल्लवंशका संस्थापक राजा स्थितिमल्ल एक बैस सामन्तका घरजुवाइँ भएर पछि नेपालका अधिपति भएका थिए। यी पनि आफूलाई सूर्यवंशी क्षत्रिय मान्दथे। यिनका साथमा आएका ब्राह्मणहरू संभवतः सरवरिया थिए। बैस मंत्री वा भारदारहरूद्वारा स्थितिमल्ल राजा बनाइएका हुनाले यिनले मंत्रिवर्गमा बैसहरूलाई कायम राख्न आवश्यक परेको थियो। यिनका छोरा ज्योतिर्मल्लले आफ्ना प्रजालाई वर्णविभाग गरेर पेशा बाँडिदिंदा आफ्ना वंशलाई क्षत्रियमा र आफ्ना साथमा आएका गुरु-पुरोहितलाई ब्राह्मणवर्गमा राखे। यस समयमा सारा बैसहरू नेवारी बोली लिएर नेवार बनिसकेका थिए। तैपनि क्षत्रियको चिह्नस्वरूप 'सिंह' शब्द आफ्ना नामका साथ जोड्दथे। ज्योतिर्मल्लले यिनीहरूलाई क्षत्रियमा नलिएर वैश्यमा गने। यो कुरा लाचार भएर बैसहरूले पनि पसन्द गरे। बैसहरूका गुरु-पुरोहित जो ब्राह्मण थिए, तिनमा एक थरी आचार्य ( आचाजु ) र अर्का थरी जोसी कहिन्थे। यिनलाई पनि ज्योतिर्मल्लले ब्राह्मणमा नगन्दा वैश्यमा मिले।

ज्योतिर्मल्लले र यिनका उत्तराधिकारीहरूले उत्तर प्रदेश वा बिहारबाट रजपूतका छोराछोरी झिकाई विवाह गर्ने नियम गरे। आफ्ना विवाहितापट्टिका सन्तानलाई मात्र 'मल्ल' भनेर ल्याइतापट्टिका सन्तानलाई 'सिंह' भन्ने नियम चलाए। जो घरजुवाइँ आएका थिए ती पनि सिंह कहिन्थे। विस्तार-विस्तार भारदारहरूमा यिनीहरू पनि घुस्न थाले। यी भारदारहरूले आपसमा मात्र बिहावरी र खान-पान चलाउँदा यिनीहरूको एक वर्ग खडा भएर साधारण बैसहरू-भन्दा माथि उठ्यो। भारदारमा पस्न नसकेका बैसहरूले व्यापारको वृत्ति लिई तल्ला वर्गमा रहेर श्रेष्ठ ( संस्कृत श्रेष्ठी; हिंदी सेठ ) कहिन लागे। आचाजु र जोसी पनि जो राजाका दरबारमा पूजापाठ गर्दथे, ती माथिल्ला वर्गमा र अरू तल्ला वर्गमा मिले। यो चलन मल्ल-राज्यका समाप्तिकालतक चलिरह्यो। हुनता काठमाडौं, ललितपुर, भक्तपुर र दोलखासमेत चार रियासतमा गरी भारदारवर्गका बैसहरूका थर चालीसभन्दा ज्यादा भएका थिए। तर गोरखालीका भारदारमा पाँडे, पन्थ आदि छथर रहेका हुनाले तिनीहरूले पनि आफूलाई छथरी भनेर तल्ला वर्गका बैसहरूलाई पाँच थर भन्ने अर्थहीन नाम दिए। यो व्यवहार लगभग आजसम्म चलिरहेको छ।

यी पछिल्ला मल्लराजाहरूका समयमा बिहारबाट मैथिल ब्राह्मण र बनियाँ ( ठोकडे ) समेत आए। यिनीहरूले पनि नेवारी बोली लिएका छन्। तर यिनीहरू आफूलाई नेवारमा गन्न संकोच मान्दछन्।

यो भयो सनातनी बैसहरूको कथा। अब बौद्धहरूतिर हेरौं। पठानहरूले विहारहरू ध्वस्त गरिदिएपछि भिक्षु वा बाँडाहरूदेखि मानिसहरू विरक्त भइसकेका थिए। यस कारणले ती विहारहरूमा गृहस्थहरू गएर भिक्षु-भिक्षुनी बन्न छोडे। बचे-खुचेका भिक्षु-भिक्षुनी वा बाँडा-बँडेनीका व्यभिचारबाट पैदा भएका सन्तानले विहारहरू भरिन लाग्दा ज्योतिर्मल्लले यिनीहरूलाई गृहस्थ बनाई विवाह गर्ने नियम चलाए। त्यहाँदेखि भिक्षु-भिक्षुनी बन्ने काम शिष्यपरंपराबाट छुटी सन्तानपरंपरामा गयो। यसै समयमा बौद्ध भइरहेका बाँडा, उदास, ज्यापू आदिको पुरोहित्याइँका निमित्त बाँडाहरूबाट एक वर्ग उठेर गुरु-भाजू वा गुभाजूको वर्ग खडा भयो। बाँडाहरू केवल पुजारी बनिरहे। यी बौद्धविहारमा भिक्षु हुनालाई बैस र ज्यापूका साथसाथ भोटिया, गुरूङ्, स्यार्पा र मुर्मीसमेत आएर बस्दथे। यस कारण यिनीहरू मिसिएर पैदा भएका गुभाजू, बाँडा र उदासका रंग-रूपमा केही मंगोलक लक्षण पाइन्छन्। यत्तिका भरमा केही परदेशी लेखकहरूले समग्र नेवारलाई मंगोलक बताउने गरेका छन्। यो उनीहरूको भारी भ्रम हो।

गुभाजू र बाँडा गृहस्थ बने तापनि यिनीहरूका बहालहरू सार्वजनिक संपत्तिका रूपमा रहेका थिए। परदेशीहरू आएर यी बहालमा रहँदा जो किराया लिन्थे त्यसको नाम पनि 'बहाल'

रह्यो । तर गत एक सय वर्षका बीचमा यी बहालहरू पनि त्यहाँ रहेका गुभाजू र बाँडाहरूले व्यक्तिगत संपत्ति गराएर बाँडिलिए । केवल चैत्यमात्र सार्वजनिक रहेका छन् । बाहिर जुन देशमा गए तापनि यिनै बहालमा नआई गुभाजू वा बाँडाको व्रतबन्धसंस्कार नहुने नियम भएको हुनाले धार्मिक केन्द्र भएर यिनै बहाल रहेका छन् । अब यिनमा न पठन-पाठनको काम हुन्छ, न औषधीको, न शिल्पकलाको । तर यी बौद्धहरूमा आफ्ना धर्मका उपर ठूलो भक्ति देखिन्छ । धनी व्यापारीहरू धार्मिक सेवाका निमित्त जो बडा-बडा दान दिन्छन्, त्यत्तिको सनातनीहरू दिंदैनन् ।

समुद्रसम्म कीर्तिपताका फैलाएका छौं भन्ने लिच्छवि[1] वा ज्यापूहरूको अवस्था यी मल्लराजाहरूका समयमा पनि केही सुध्रिएन । ज्योतिर्मल्लले यिनलाई शूद्रमा राखिदिएका थिए । तल्ला दर्जाका शिल्पको काम गर्ने माली, चित्रकार, नाऊ, नकर्मी आदिलाई यी ज्यापू-भन्दा तल्ला वर्गमा राखिदिए । यो व्यवस्था आजसम्म चली आएको छ ।

मल्लहरूका समाप्तिपछि श्री ५ पृथ्वीनारायण शाहले र उहाँका उत्तराधिकारीहरूले नेवारमात्रलाई सैनिकमा भर्ना नगर्ने नियम गरेका हुनाले क्षत्रियत्वको दावा गर्ने छथरी-बैसहरूले वृत्ति नपाई बोक्रिन लागेका थिए । तर निजामती काममा लिने नियम गरेका हुनाले सिंगलिलादेखि महाकालीसम्मका पहाड र तराईका समेत अड्डा-अदालतहरूमा फैलिन पाएका हुनाले सैनिक वृत्ति नपाए पनि कत्ति हानि भएन । काठमाडौं राजधानी भएको हुनाले राज्य-भरको धन यहाँ जम्मा हुँदा व्यापार ज्यादै बढ्यो र यो पेशा गर्ने श्रेष्ठ-बैसहरूले र बाँडा-उदासहरूले समेत धनाढ्य हुने समय पाए । परन्तु इ० सं० १७४० देखि भारतीय मारवाडी र बनियाँहरूले स्थायी रूपले काठमाडौंमा रहेर व्यापार गर्ने अधिकार पाउँदा यिनीहरूले भारततिरबाट आउने मालको व्यापार आफ्ना हातमा पारे । भोटतिरबाट हुने व्यापारमात्र बाँडा-उदासहरूका हातमा बच्यो । इ० सं० १९४० देखि छुम्बिको बाटो खुल्दा काठमाडौंबाट ल्हासातिर व्यापारी मालको आवत-जावत बन्द भएर यस व्यापारबाट पनि हात धुनुपऱ्यो । यस कारणले मारवाडी र बनियाँलाई यी श्रेष्ठ र उदासहरूले उछिन्न नसकी उनीहरूका एजेण्टजस्ता भइरहेका छन् । तैपनि छथरी भन्दा यिनै उन्नत अवस्थामा रहेका देखिन्छन् ।

शाहवंशको र राणाहरूको समेत शासनव्यवस्था फौजी ढाँचाको रहेको हुनाले कृषकवर्गका ज्यापूहरू ज्यादा चुसिएर दिनपरदिन कंगाल भइरहेका छन् । इ० सं० १८१६-मा अंग्रेज राजदूत काठमाडौंमा आएर बसेपछि बेलायती ढाँचाका घर बन्न थाल्दा वास्तुकलाका शिल्पकारीहरूले प्रशस्त काम पाएर आफ्ना अवस्थालाई उन्नत गराउँदै रहेका छन् । शासकवर्गले बेलायती मूर्ति

---

१ ) आसागरप्रथित शुभ्र यशोध्वजानां राज्ञां कुलाम्बर शशी भुवि लिच्छविनाम् ॥
( ललितपुरमा रहेको नरेन्द्रदेवको ६४५ को शिलापत्रबाट )

र चित्रहरूको विशेष आदर गरी नेपालमा बनिने मूर्ति र चित्रहरूको अनादर गरिदिंदा उदास र चित्रकारीका हातमा रहेका यी दुइ कलाको बडो दुर्दशा भइरहेको छ। श्रीवलवाहुले नेपालबाट यी दुइ कलालाई भोट र चीनमा लैजादा कुबलै खान्जस्ता बडा बादशाहले उनलाई बडो आदर गरी आफ्ना शिल्पशालाका अध्यक्ष बनाएका थिए। आज उनै कलाको यो दुर्दशा देख्दा कुन नेपालीको चित्त नदुख्ला ?

## ५। नेवारी भाषा र नेवारमा रहेका बैगुन र गुन

आग्नेयदेशी बोलीहरूमा प्रसार हुने गुण छैन। यी बोली बोल्ने मगर, गुरूङ् आदि जब आफ्ना मूल घरबाट उठेर अन्यत्र बसाइँ जान्छन् तब एक-दुइ पुस्तामानै आफ्नो बोली भुल्दछन्। यस कुरामा नजीकको उदाहरण रूमजाटारका गुरूङ् छन्। यिनीहरू लमजुङ् वा कास्कीबाट यहाँ बसाइँ सरेको २०० वर्ष भएको छैन। यति छोटा समयमानै तिनीहरूले आफ्ना बोलीलाई भुलिसकेका छन्। यो कमजोरी नेवारीमा पनि छ। नेपाल ब्याँसी, त्यसदेखि पूर्वपट्टिका बनेपा आदि सात गाउँ र दोलखा मूल घर भएर रहेका हुनाले त्यहाँ नेवारी बोली रहेको छ। यस बोलीलाई राष्ट्रभाषा बनाउनाका निमित्त मल्लराजाहरूले साहित्य र शिलापत्र-समेत यस बोलीमा लेखाई नेपालभाषा भन्ने नाम दिएका थिए। तर परवतिया बोलीमा प्रसार हुने गुण रहेको हुनाले यसले ढाक्दा काठमाडौंका राजा प्रतापमल्लले इ० सं० १६६९-का रानीपोखरीका शिलालेखमा यसै बोलीको व्यवहार गरेका थिए। सत्रौं शताब्दीमा केही नेवार गोरखामा बसाइँ गएका थिए। तिनीहरूले आफ्नो बोली बिलकुल भुलेर परवतियालाई मातृ-भाषा गराएका छन्। इ० सं० १७६९ देखि १८०५ सम्ममा केही नेवार नेपाल ब्याँसीबाट भगाइएका वा निकालिएका थिए। यिनीहरू पोखरा, पाल्पा, धनकुटा, डोटी आदि मुख्य बस्तीहरूमा बसेका छन्। यिनीहरूले पनि आफ्नो बोली भुलिसकेका छन् वा भुल्न तयार भै-रहेका छन्। पछि आफूखुशी बसाइँ सर्ने नेवारहरूको पनि यही हाल छ।

तर यस बोलीमा भक्तपुरका राजाहरूले अनेक नाटक लेखाई पुराना नृत्यकला र रागहरूको रक्षा गरी राखेका छन्। परवतिया बोलीको सबभन्दा पुराना नमूना पनि यिनै नाटकमा पाइन्छन्। यस कारणले यस बोलीको उद्धार गरेमा मात्र नेपाली संस्कृतिको नृत्यकला र गानविद्याको उद्धार हुन सक्छ। तर आर्य भाषाका नयाँ शब्द भरमार गरेर नयाँ साहित्य तयार गर्दा यस बोलीका उपर कुठाराघातमात्र हुन्छ, उद्धार हुँदैन। यस कारणले नेपाली विद्वान्हरूले यस बोलीका पाएसम्मका पुराना शब्द र व्याकरणका नियम छानेर पुराना साँचामा ढाल्दै ल्याएमा राष्ट्रिय संपत्तिको उद्धार हुने आशा छ।

आर्य र आग्नेयदेशी नस्ल मिलेर बनेका अचेलका ७० लाख नेपाली जनतामा तीन लाख-जति नेवार छन्, तिनमा दुइ लाखजति आफ्ना मूल घरमा रहेका छन्। यिनीहरू आर्य

नस्लका भए तापनि आग्नेयदेशी भाषा बोल्ने हुनाले नस्लका नाताले आर्य जनतासंग, बोलीका नाताले आग्नेयदेशी जनतासंग संबन्ध जोडेर दुइ नस्ललाई जोडनामा चुकुलको काम दिएका छन् । यिनीहरूमा एक बडो गुण रहेको छ नागरिकता । यस गुणका प्रभावले यिनीहरूमा आपसमा एकता जमेको छ । तिनीहरू आपसमा मिलेरनै रहन चाहन्छन् नकि फुटेर । सहरमा होस्रोस् वा गाउँमा, एउटाका घरमा जोरेरनै अर्काको घर बनाउँदछन् । तर यस गुणबाट एक भारी बैगुन यिनीहरूमा पैदा भएको छ । यिनीहरू अन्यत्र गएर घुमफिर गर्न सक्तैनन् । पहाड वा तराईमा हाकिम भएर जाने वा व्यापार गर्न जाने नेवारहरू आफू रहने अड्डा-अदालत वा बजारदेखि पर बहुत कम जान्छन् । अरू जात बसेका गाउँका पुछारसम्म गएर परिस्थिति बुझ्ने चाख यिनीहरूमा कम हुन्छ । परन्तु यो बैगुन अब हट्दो छ ।

नेवारहरूमा मुख्य बनेका छथरी बैसहरूमा बडप्पनको भाव ज्यादा रहेको हुनाले आपसमा पनि खान-पिन र बिहावरीमा समेत ऊँचनीचको भाव रहेको हुन्छ । यिनका जात-भातका सिंढीहरू भरेंगका सिंढीजस्तै तल-माथि रहेका हुन्छन् । सरकारी नोकरीको वृत्ति लिएको हुनाले सरकारको वा माथिल्ला हाकिमका दबाउले मिथ्या व्यवहार गर्ने बानी यिनीहरूमा पाइन्छ । सुदखोरी र जुवाखोरीसमेत गर्छन् तापनि भडकिला चालमा रहने हुनाले पाँचथरी श्रेष्ठजत्ति धनी हुँदैनन् । पाँचथरीहरू व्यापारको पेशा गर्ने ज्यादा हुनाले विश्वास बढाउनाका निमित्त व्यवहारमा इमानदारीको बडो विचार राख्दछन् । बौद्धहरू झन् इमानदार हुन्छन् । सुन-चाँदीका माल बनाउने पेशा भएका बाँडाहरूलाई विना लिखतले हजारौं रुपियाँको माल दिए तापनि लिएको छैन भनेर कदापि भन्दैनन् । शिल्पको काम गर्ने उदासहरूमा पनि बेइमानी बहुत कम पाइन्छ । तर म्यादमा काम नसिध्याएर ढिलाउने घटिया बानी यिनमा पाइन्छ । खेतीको काम गर्ने ज्यापूहरू झन् इमानदार, सोझा र परिश्रमी हुन्छन् । यिनमा सहनशीलता पनि ज्यादा हुन्छ । यिनीहरूका जनानाहरू पनि बडा इमानदार हुन्छन् । गरिबीले गर्दा अरूका घरमा नोकरी गरेर चित्तवृत्ति बिगारेका ज्यापुनीबाहेक अरू ज्यापुनीमा व्यभिचारको गन्ध पनि पाइँदैन । परिश्रमी पनि उत्तिकै हुन्छन् जत्ति यिनका पति हुन्छन् ।

---